पुन र्घनिघ्नाब्द नखेषुचंद्रैर्लब्धं च घट्यादिषु युक्तमेतत्।
रेखान्तरेणाङ्घ्रि युतोन पूर्वे परोऽथ मेषे खकृतिश्च देवे ॥ २ ॥
अब्दो भवघ्नः पृथगर्कहीनः खागैक लब्धेन युतः खरामैः।
लब्धाधिमासस्यतु योऽस्ति शेषः सैकोर्कसङ्क्रान्ति तिथिस्तु चैत्रे ॥ ३ ॥

वारेरूपं तिथौ रुद्रा नाड्यां पंचदशैव हि।
एकत्रिंशत्पले देया जायते सूर्यसंक्रमः ॥ ४ ॥

गतवत्सरसंक्राताविति शेषः—

अष्टाधिमासाः स्युर्निस्यं प्रोच्यंते फाल्गुनादयः।
सौम्यपौषौ क्षयं नित्यं भवेतामितिनिश्चितम् ॥
क्षयोवाप्यधिमासो वा स्यादूर्जे इति निश्चितम्।
नक्षयोनाधिमासः स्यान्माघो वै परिकीर्तितः ॥ ६ ॥
पंच मासास्तु वैशाखादधिमासा व्यवस्थिताः।
भवंति चाष्टभिर्वर्षैर्भवै ( ११ ) र्वाङ्क निशाकरैः ( १९ ) ॥ ७ ॥
तथैव फाल्गुनश्चैत्र आश्विनः कार्तिकोऽधिकः।
एते र्कीन्द्रैः (१४१) शराङ्गैर्वा ( ६५ ) कदाचिद्गोकु ( १९ ) वत्सरे ॥८॥
मार्गपौषौ क्षयौ स्यातां कदाचित्कार्तिको भवेत्।
अधिमासस्तदा भाद्रपदो ज्ञेयश्च फाल्गुन ॥ ९ ॥
क्षयात्प्रागधिमासः स्यान्नित्यं भाद्रपदत्रये।
आश्विनोर्जौ सदा स्यातामादौ भाद्रपदः सकृत् ॥ १० ॥
द्वात्रिंशद्भिर्गतैर्मासैर्दिनैः षोडशभिस्तथा।
घटिकानां चतुष्केन सम्पतत्यधिमासकः ॥ ११ ॥
व्योमाग्नि नागै रहितः शकेन्द्रो नवेन्दुभिर्भाजित शेषकाङ्कैः।
त्रिरुद्रखाष्टाष्टि शराश्वविश्वे द्विचैत्रमारभ्य सदाधिमासः ॥१२॥
बाणाग्निशक्रोनितशाकमध्ये सूर्याहता वेदयुता मुनीन्द्रैः।
नवेन्दुभक्तो भवतीह शेषश्चैत्रादिमासेषु तदाधिमासः ॥१३॥

चन्द्रार्कयोस्तुबिम्बैक्यं प्रतिपद्दर्शसंधिषु।
अमान्तादुभयत्रापि रसनाड्योऽर्कमण्डलात् ॥ १४ ॥
तन्मण्डलाच्छशीगच्छेत्ततः सूर्यस्य संक्रमः।
मासोऽसौ मलिनः प्रोक्तो तद्धीनोऽधिकः स्मृतः ॥ १५ ॥

असङ्क्रान्तिमासोऽधिमासः स्फुटंस्यात् ।
द्विसंक्रान्तिमासः क्षयाख्यः कदाचित् ॥
क्षयः कार्तिकादित्रये नान्यतः स्यात् ।
तदावर्षमध्येऽधिमासद्वयं च ॥ १६ ॥

इति श्री टीकारामधनंजय कृतायां मनोरमायां पञ्चाङ्ग-
स्पष्टाधिकारश्चतुर्थः ॥ ४ ॥

# अथ ग्रहध्रुवाधिकारः ।

पञ्चाङ्गस्पष्टाधिकारपछि क्रमप्राप्त ग्रहध्रुवाधिकार आरंभ गर्दा पहीले वर्षाधिपति जान्ने रीती उपजातिछंद ले भंदछन्—

शास्त्राब्दसौराब्दगणात्कलेर्वा
वर्षाधिपाः सप्तहृतावशेषाः ।
शुक्रेन्दुवाचस्पतिसूर्यसौम्याः
शनैश्चरारौ क्रमशो भवंति ॥ १ ॥

'शास्त्राब्दसौराब्दगणात्' शास्त्रारम्भ देखियताका सौरवर्षदेखि-अर्थात् अब्दपिण्ड देखि—'वा' अथवा 'कलेः' गतकलिदेखि 'सप्तहृतावशेषाः' ७ ले भागलीयेर बाँकि रहेका देखि 'शुक्रेन्दुवाचस्पतिसूर्यसौम्याः शनैश्चरारौ' शुक्र, चंद्र, बृहस्पति, सूर्य, बुध, शनिश्चर, मङ्गल, ई 'क्रमशः' क्रमैले 'वर्षाधिपाः' वर्षाधिपति 'भवंति' हुन्छन् ॥ १ ॥

जस्तैं=८१२ मा ७ ले भाग दिये पछि० शेषर त्यो। एवं गतकलि १०१२ मापनि ७ को भाग दींदा शेष शून्य० रह्यो अतः शुक्र यस वत्सर को अधिपति भयो ॥

| शेष | ० | १ | २ | ३ | ४ | ५ | ६ |
|---|---|---|---|---|---|---|---|
| वर्षाधिप | शु० | चं० | बृहस्प० | सूर्य | बुध | शनि | मंगल |

अब्दोर्कनिघ्नो रविमासयुक्तः
सप्तावशेषे रविमासनाथाः ॥
ज्ञशुक्रसूर्यारसुरेज्यसौरि-
चंद्राः क्रमात्सावनमासतोऽन्ये ॥ २ ॥

'अर्कनिघ्नः' १२ ले गुणियेको 'रविमासयुक्तः' सौरमासले युक्त 'अब्दाः' अब्दपिण्ड 'सप्तावशेषे सति' ७ ले शेष गरे छदामा 'क्रमात्' क्रमैले 'ज्ञशुक्रसूर्यारसुरेज्यसौरिचंद्राः' बुध, शुक्र, सूर्य, मंगल, बृहस्पति, शनैश्चर, चंद्र, ई 'रविमासनाथाः' सौरमासाधिपति (भवंति) हुंछन् 'सावनमासतः' सावनमास देखि भनि 'अन्ये' कोहि आचार्य भंदछन् ॥ २ ॥

| शेष | ० | १ | २ | ३ | ४ | ५ | ६ |
|---|---|---|---|---|---|---|---|
| मासाधिपः | बुध | शुक्र | सूर्य | मंगल | बृहस्प | शनैश्च | चंद्र |

अब्दः पृथक्खेशगुणः शराग-
रामाङ्कलब्धेन्द्रियचंद्रयुक्तः ॥
तत्षष्टिशेषादिषुभिर्युगानि
लब्धानि शेषेङ्गिरसः समा स्युः ॥ ३ ॥

'पृथक' दुइ स्थानमा राखियेको 'खेशगुणः' ११० ले गुणियेको 'शरागरामाङ्कलब्धः' २५१५ वर्तमाण चेपकले युक्त गरे पछि ९३७५ ले भाग दींदा मिलेका लब्धिमा 'इन्द्रीयचंद्रयुक्तः' १५ जोडियेको 'अब्दः' अब्दपिण्ड 'तत्षष्टिशेषात्' ६० ले शेष गराइयेका तेस देखि 'इषुभिः' ५ ले भाग दींदा 'लब्धानि' मिलेका लब्धि 'युगानि' युग हुन्छन् 'शेषे' वाकि रहेकामा 'अंगिरसः' बृहस्पतीका 'समा स्युः' वर्ष हुन्छन् ॥ ३ ॥

अब्दे खेशगुणेदेयाः पञ्चचंद्रेषुलोचनाः !

भास्वतीकरणे नित्यं वत्सरं मिहिरोदितन् ॥ १ ॥

अब राहुका ध्रुवा बताउछन्--

पातः शरघ्नो नगनेत्रयुक्त-
स्त्रिनं दशेषो गगनाङ्गनिघ्नः ॥
द्विरिंदुरामाप्तखरामहीनः
सांशोब्दवृन्दात्पुनरङ्गचन्द्रैः ॥ ४ ॥

'शरघ्नः' ५ ले गुणियेको 'नगनेत्रयुक्तः' २७ ले युक्त भयेको 'गगनाङ्गनिघ्नः' ६० ले गुणियेको 'अब्दपिण्ड इति पूर्वश्लोकादनुवर्तते' अब्द पिण्ड जोछ सो 'द्विः' दुइ स्थानमा राखनु र एक स्थानमा 'इन्दुरामाप्तखरामहीनः' ३१ ले भाग दींदा भयेका लब्धि र ३० घटायेर 'पुनः' फेरि 'अब्दवृन्दात्' अब्दपिण्डदेखि 'अङ्गचंद्रैः' १६ ले भाग लींदा मिलेका लब्धी 'सांशः' अंशादि युक्त भयेको 'पातः' राहुध्रुवा हुन्छ ॥

न[1] प्राप्यते तत्र त्रिनंदशेषस्तदता खखाब्धीपुयुतं प्रकुर्यात् ।
तदाबुधैः षष्टिगुणं विधेयं पूर्वोक्तवत्पात खगोध्रुवः स्यात् ॥ ५ ॥

जस्तै=शास्त्राब्द ८१२ लाइ ५ ले गुणेर ४०६० मा २७ जोडेर ४०८७÷९३ भागदींदा शेष ८८ बच्यो यस्लाइ ६० ले गुणेर ५२८० दुइ स्थानमा राखेर एक स्थानमा ३१ को भाग दींदा लब्धि अशादि १७०।१९। २१ भये ई र अर्को स्थानमा राखेका अंकमा ३० स्मेतघटाउँदा ५०७९। ४०।३९ भये फेरी अब्दपिण्ड ८१२ मा १६ ले भाग दींदा अंशादिलब्धि ५०।४५।० भयो यसलाइ ५०७९।४०।३९ मा जोडे पछि राहु ध्रुवा ५१३०।२५।३९ भयो ॥ यहाँ पहीले राहु सिद्ध गर्नु परेको शताहत द्वा० का अधिकारमा पडला भनी हो ॥

शास्त्राब्दपिंडो वसुवह्निषड्घ्नः
सशीतरश्मिज्वलनोमहीजः ॥
शताहतद्वादशराशिचक्रैः
शेषोब्धिबाणैश्चयुतोऽब्दवृंदात् ॥ ५ ॥



१ ख ग पुस्तकमा यो श्लोक मूल मा छैन ।

'वसुवह्निषड्घ्नः' ६३८ ले गुणियेको 'सशीतरश्मिज्वलनः' ३१ युक्त भयेको 'शताहतद्वादशराशिचक्रैः शेषः' १२०० ले शेषगरियेको 'अब्द-वृन्दात्' अब्दपिंडदेखि 'अब्धिबाणैः' ५४ ले भागलींदा मिले का लब्धि ले 'युतः' युक्त भयेको 'शास्त्राब्दपिण्डः' शास्त्राब्दपिण्ड जो छ सो 'महीजः भवति' भौम ध्रुवा हुन्छ ॥ ५ ॥

जस्तै=शास्त्राब्द ८१२ लाइ ६३८ ले गुणदा ५१८०५६ भयो यस्मा ३१ जोडेर शास्त्रब्दमा ८१२÷५४ को भागदींदा अब्द अंशादि १५।२।१३ यसलाइ पूर्वांक मा जोडेर ५१८१०२।२।१३। भयो यसलाइ १२०० शेषगर्दा शेष भौमध्रुवा अंशादि ९०२।२।१३ भयो।

ज्ञोच्चं खखाश्विघ्नमधोदशघ्नं
तिथीन्दुलब्धाङ्गिरसाश्विहीनम् ॥

'शास्त्राब्दपिण्ड इति शताहतद्वादशराशिचक्रमिति च सर्वत्रानुवर्तते' 'खखाश्विघ्नं' २०० ले गुणिये को 'अब्दपिंडः' अब्दपिंड 'अधः' दुइ स्थानमा राखनु र एक स्थानमा 'दशघ्नं' १० ले गुणेका देखि 'तिथीन्दु-लब्धाङ्गरसाश्विहीनम्' ११५ ले भागलींदा मिले का लब्धि ले र २६६ ले विहीन अर्को स्थानमा राखेको अंक फेरि 'शताहतद्वादशराशिचक्रशेषं' १२०० ले शेष गरियेको 'ज्ञोच्चं भवति' अंशादि बुध शीघ्र ध्रुवा हुन्छ।

जस्तै-८१२ लाइ २०० गुणदा १६२४०० यसलाइ दुइ स्थानमा राखेर एक स्थानमा फेरी १० ले गुणे पछि १६२४००० भयो यसमा ११५ को भाग दीयेर लब्धि अंशादि १४१२१।४४।२० मिले इनि लाइ अर्कोस्थानमाराखेको अङ्क १६२४०० मा घटाये पछि १४८२७८।१५।४० फेरी यसैमा २६६ घटाये पछि १४८०१२।१५।४० लाइ १२०० ले शेष गराये पछि बुधको उच्चध्रुवा अंशादि ४१२।१५।४० भयो ॥

सताहतोऽधः खनवाप्तनेत्र-
सूर्याब्यजीवोब्दनखांशयुक्तः ॥ ६ ॥

'शताहतः' १०० ले गुणेको अब्दपिण्ड 'अधः' दुइ स्थानमा राखनु र एक स्थानमा 'खनवाप्तः' ९० ले भागलींदा का लब्धि ले युक्त 'नेत्रसूर्याब्य' १२२ ले युक्त 'अब्दनखांशयुक्तः' अब्दपिण्डका बीसवाँ भागले युक्त १२०० ले शेषगराइका जीवःस्यात् गुरु ध्रुवा हुन्छ ॥ ६ ॥

जस्तै=अब्दपिण्ड ८१२ लाइ १०० गुणे पछि ८१२०० लाइ दुइ स्थानमा राखेर एक स्थानमा ९० को भागदींदा लब्धि अंशादि ९०२।१३। २० भये यसलाइ ८१२०० मा जोडे पछि ८२१०२।१३।२० भये फेरी अब्द-पिण्ड को बीसवाँ भाग ८१२÷२०=४०।३६।० र १२२ जोडेर १२०० ले शेष गराउँदा बृहस्पतिको अंशादि मध्यम ध्रुवा ६६४।४९।२० भयो ॥

खेषुस्वरघ्नोऽङ्कशराग्नियुक्तः ।
सितोच्चमाढ्यं कुनृपैः शतघ्नात् ॥

'खेषुस्वरघ्नः' ७५० ले गुणेको 'अङ्कशराग्नियुक्तः' ३५९ ले युक्त 'शतघ्नात्' १०० ले गुणियेका अब्दपिण्ड देखि 'कुनृपैः' १६१ ले भागदींदा मिलेका लब्धि ले 'आढ्यं' युक्त गरेर १२०० ले शेषगरे पछि—'सितोच्चं भवति' शुक्रोच्चध्रुवा हुन्छ ॥

जस्तै=८१२ लाइ ७५० ले गुणदा ६०९००० भये यस्मा ३५९ जोडे पछि ६०९३५९ भयं फेरी शास्त्राब्द ८१२ लाइ १०० ले गुणेर ८१२००÷१६१ ले भाग लींदा अंशादिलब्धि ५०४।२०।५२ भये ई ६०९३५९ मा युक्त गरे पछि ६०९८६३।२०।५२ भयो यस्लाइ १२०० ले शेष गराये पछि शुक्रोच्च ध्रुवा २६३।२०।५३ भयो ॥

खवेदनिघ्नोऽब्धिनवेषुयुक्तः
शनिर्दशघ्नात्सहितश्चशक्रैः ॥ ७ ॥

'खवेदनिघ्नः' ४० ले गुणेको 'अब्धिनवेषुयुक्तः' ५९४ ले युक्त दशघ्नात्-अब्दपिण्डात्' १० ले गुणेका अब्दपिण्डदेखि 'शक्रैः' १४ ले भाग दींदा मिलेका लब्धिले र ('चात्' चकार पढ़नाले १४ ले पनियुक्तः) 'शनिः' अंशादि शनिध्रुवा हुन्छ ॥

जस्तै=८१२ लाइ ४० ले गुणदा ३२४८० भये यस्मा ५९४ जोडदा ३३०७४ भये फेरी ८१२ लाइ १० ले गुणेपछि ८१२० मा १४ को भाग दींदा अंशादिलब्धि ५८०।०।० मिलेई ३३०७४ मा जोडेर १२०० को भाग दीयेर शुद्धगराये पछि अंशादि शनि ध्रुवा ५४।०।० भयो फेरि १४ योग गर्ने का पक्षमा ११६८।०।० शनि मध्यम ध्रुवा भयो ॥

ई क्रमैले राहु भौम बुधोच्च गुरुशुक्रोच्च बतायेर वत्सरांतरमा ध्रुव शुद्धि शार्दूल विक्रीडित छंदका एक श्लोकले भन्दछन् ।

भौमेष्टाग्निरसाः पलैकसहिता ज्ञे बाहुनागेन्दवः
सप्ताग्नी प्रयुते गुरौ शशिदिशो नन्दान्वितो वै ध्रुवे ॥
शुक्रोव्योमशराद्रिभिर्गिरिगुणौ सौरिः खवेदैः पले
लोकाब्धीखनवद्वये जिनयुतो राहुर्गतेवत्सरे ॥ ८ ॥

'भौमे' मङ्गलमा 'अष्टाग्निरसाः पलैकसहिताः' ६३८। १ ,ज्ञे, बुधमा 'बाहुनागेंदवः सप्ताग्नी' १८२।३७ 'प्रयुते' जोड़ेपछि 'गुरौ' बृहस्पतीमा 'शशिदिशोनंदान्विः' १०१।९ ले युक्त भये पछि 'शुक्रे' शुक्रमा 'व्योमशराद्रयः' ७५० 'गिरिगुणैः' ३७ अर्थात् ७५०। ३७ 'सौरिः' शनी 'खवेदैः' ४० पले लोकाब्धी ४७ अर्थात् ४०।४७ 'खनवद्वयं' २९०।१४ 'जिनयुतः' युक्त 'राहुः' राहु गतेवत्सरे गयेका वर्षका ध्रुवामा ई जोड़नाले वर्तमान वर्ष का ध्रुव हुन्छन् ॥८॥

इति श्रीटीकारामधनंजयकृतायां मनोरमायां
ग्रहध्रुवाधिकारः पञ्चमः ॥ ५ ॥



# अथ ग्रहमध्यमाधिकारः ॥



ग्रहध्रुवाधिकार बतायेर क्रमप्राप्त 'मध्यमाधिकार' आरम्भ गर्दा पहिले भौम मध्यम सिद्ध गर्ने रीति उपजाति छंदके भंदछन् ।

भौमः स्वरघ्नाद द्युगणात्कृताप्तं
पुनर्द्युवृन्दात्त्रिशताप्तहीनम् ॥

'द्युवृन्दात्' अहर्गणदेखि 'त्रिशताप्तहीनम्' ३०० का भागमा प्राप्त लब्धि ले हीम 'स्वरघ्नात्' ७ ले गुणियेका 'द्युगणात्' अहर्गण देखि 'कृताप्तं' ४ ले भागदींदाका लब्धीले 'युतः' युक्त 'भौमः' भौममध्यम हुन्छ ( मध्यम को लक्षण रवीन्दु मध्यमाधिकारमा बतायेका छ उसै बाट बुझनु ।

जस्तै=दिनगण २७ मा ३ ३०० को भागदींदा लब्धि ०।५।२४ मिल्यो यो अहर्गण लाइ २७ × ७ ले गुणेर १८९÷४=४७।१५।० मा घटाये।पछि शेष ४७९।३६ भौम ध्रुवा ९०२।२।१२ मा युक्त गरेपछि लंकामा सूर्योदयासन्न समयको मध्यम मंगल ध्रुवा ९४९।१०।४९ भयो ॥

## अष्टाष्टशेषः खखरामनिघ्नः

## पक्षाग्निभिः सोमसुतस्यशीघ्रम् ॥ १ ॥

'खखरामनिघ्नः' ३०० ले गुणेको 'अष्टाष्टशेषोद्युगणः' ८८ ले शोषित अहर्गण 'पक्षाग्निभिः' ३२ ले भागदींदा प्राप्त लब्धि (युतः) युक्त 'सोम-सुतस्य' बुधको 'शीघ्रम्' शीघ्रध्रुवा हुन्छ ॥ १ ॥

जस्तै=अहर्गण २७ मा ८८ ले शेषगर्दा शेष २७ रह्यो यस्लाइ २७×३००=८१९९÷३२ ले भागदींदा फल=३६८।१०।५५ मिले यस्लाइ बुधोच्च ४१२।१५।४० मा जोड़े पछि बुधशीघ्र ७८०।२६।३५ भयो ॥

## गुरुर्गुणघ्नाद् द्युगणाद्दशाप्तौ

## वेदाब्धिभिर्लब्धविवर्जितश्च ॥

'गुणघ्नात्' ३ ले गुणेका 'द्युगणात्' अहर्गणदेखि 'दशाप्तः' १० ले प्राप्त लब्धि ले युक्त 'वेदाब्धिभिः' ४४ जो भाग दीये का अहर्गण देखि प्राप्त लब्धि ले 'विवर्जितः' घटाइयेको 'गुरुः' मध्यम गुरु हुन्छ ॥

जस्तै=दिनगण २७ लाइ ३ ले गुणेर ८१ मा १० को भागदींदा ८।६।० भयो यस्मा २७÷४४=०।३६।४९ ई घटायेर गुरु ध्रुवा ६६४।४९। २० मा युक्त गरे पछि मध्यम गुरु ध्रुवा ६७२।१८।३१ भयो ॥

## वेदाहतोऽधोगुणभागयुक्तः

## सितस्यशीघ्रं सहितः खशक्रैः ॥ २ ॥

'वेदाहतः' ४ ले गुणेको अहर्गण 'अधः' दुइस्थानमा राखनु र एक स्थान मा 'गुणभागयुक्तः' ३ को भागदींदा मिले को लब्धि ले युक्त र 'खशक्रैः' १४० ले भागदींदा का लब्धीले 'सहितः' युक्त अर्को स्थान को सङ्क 'सितस्य शीघ्रं' शुक्रशीघ्र हुन्छ ॥

जस्तै = २७ लाइ ४ ले गुणदा १०८ भयो यस्लाई २ स्थानमा राखेर एक स्थान मा १०८÷३ को भागदींदा लब्धि ३६।०।० भयो यो र २७÷१४० = ०।११।३४ यो स्मेत् १०८ मा योग गरे पछि १४४।११।३४ भयो यस्लाइ शुक्र ध्रुवामा योग गरे पछि शुक्र शीघ्र ४०७।३८.२६ भयो ॥

शनिर्द्युवृंदान्नवभागलब्धो
ध्रुवान्वितो रव्युदयस्यमध्यः !

'द्युवृन्दात्' अहर्गण देखि 'नवभागलब्धः' नौले भाग लिंदा मिलेको लब्धि 'ध्रुवान्वितः' ध्रुवाले युक्त 'रव्युदयस्य' सूर्योदयकालको 'मध्यः' मध्यम शनिः ( स्यात् ) अन्शादिमध्यम शनिश्चर हुन्छ ॥

जस्तै = २७ मा ९ को भाग दिंदा प्राप्तलब्धि ३ यो ध्रुवा ५४।०।० मा जोडदा शनि ५७।०।० भयो मतान्तरमा ११७१।०।० भयो ॥

दिग्घ्नाद्घनोनात्खनगांशहीना-
त्त्रिभिर्भृगुज्ञौभवतश्चमध्यौ ॥ ३ ॥

'दिग्घ्नात्' १० दसले गुणेका 'घनोनात्' १७ सत्र घटेका ( अहर्गणलाइ दुइ स्थानमा राखनू र एक स्थानमा राखेका देखि ) 'खनगांशहीनात्' ७० सत्तर को भाग दींदा मिलेका लब्धि ले हीन अर्को स्थानमा राखेको अङ्क देखि 'त्रिभिः' ३ तीन ले भाग दींदा मिलेका लब्धिले 'भृगुज्ञौ' शुक्र र वुध 'मध्यौ भवतः' मध्य हुन्छन् ॥ ३ ॥

शीघ्रं भवेद्देवगुरोः शनेश्च
धरात्मजस्यापि तथैतदेव ॥ ४ ॥

'तथा' तेस्तै 'एतदेव' एहिनै 'देवगुरोः' वृहस्पतिको 'शनेः' शनिश्चरको 'धरात्मजस्यापि' मङ्गलको पनि 'शीघ्रंभवेत्' शीघ्र हुंछ ॥

जस्तै = अहर्गण ७२७ लाइ १० ले गुणदा २७० भयो येस्मा १७ घटाउदा २५३ भयो यस्लाइ दुइ स्थानमा राखेर एक स्थानमा ७० को भाग दींदा २५३÷७० = ३।३६।५१ मिले इन लाइ अर्को स्थानका २५३ मा घटाउँदा २५३-३।३६।५१ = २४९।२३।९। शेष रहे इनमा ३ ले भाग

लींदाको लब्धि बुध शुक्रको मध्यम र शनिश्चर बृहस्पति मङ्गलको शीघ्र ८३।७४३ भये ॥

दिघ्नाद्घनोनाद्विपरीतपातात्
खागांशहीनात्त्रितयेनलब्धम् ॥
त्याज्यं खखार्केषु सितज्ञमध्यं
कुजेज्यसौरेश्चतदेवशीघ्रम् ॥ ५ ॥

'दिघ्नात्' १० ले गुणेका 'घनोनात्' १७ घटेका घटनन सके 'विपरीतपातात्' १७ मा घटाउनाले शेष रहेको अंक २ स्थानमा राखनु र एक स्थान का अंक देखि 'खागांशहीनात् ७० को भागदींदा मिले का लब्धिले हीन अर्को स्थान का अंक देखि 'त्रितयेन लब्धं' ३ ले भागलींदा मिलेको लब्धि 'सितज्ञमध्यं' शुक्र र बुधको मध्य हुन्छ 'तदेव' ते हीनै 'कुजेज्यसौरेश्च' मंगल, बृहस्पति, शनिश्चर को पनि 'शीघ्रम्' शीघ्र ( भवती ) हुन्छ ॥ ५ ॥

जस्तै = दिनगण घनोन १७ न घटना ले विपरीत घटाउदा शून्य १७ मा घटाउदा १७ भो २ ठाउ राखनु र तल्लामा ७० को भागलिंदा लब्धि ०।१४ उपल्ला १७ मा घटाउदा १६।४६ भये 'त्रितयेन लब्धं' ३ का भाग लींदा ५।३५ भयो लब्धि खखार्क १२०० मा घटाउदा ११९४।२५ भयो यै शुक्र बुध को मध्य यो मंगल गुरु शनि को यै ११९४।२५ शीघ्र भयो ।

अवजशिष्ट ग्रहको बीज संस्कारपनि इन्द्रवज्रा छंदले भंदछन्

शास्त्राब्दपिण्डाद्गुणितात्कुजादेः
सूर्याम्बराक्षीषुकुखेषुवेदैः ॥
लब्धंक्रमेणाष्टशतैः फलंय-
च्चन्द्राष्टतत्वाब्धिशशांकशिष्टम् ॥ ६ ॥

'सूर्याम्बराक्षीषुकुखेषुवेदैः' १२।२०।१५।५०।४ ले 'गुणितात्' गुणियेका 'शास्त्राब्दपिण्डात्' शास्त्राब्द पिण्डदेखि 'अष्टशतैः' ८०० ले भागलींदा 'लब्धं' मिलेको 'क्रमेण' क्रमैले 'चन्द्राष्टतत्वाब्धिशशाङ्कशिष्टम्' १।८।२५।४।१ ले शेषगरियेको 'यत्' जो 'फलं ( भवति )' फल हुन्छ '( तत् )' त्यो 'कुजादेः' भौमादि ग्रहको ( बीज भवति ) कलादि बीज हुन्छ ॥ ६ ॥

जस्तै=शास्त्राब्द ८१२ लाइ क्रमैले १२।२०।१५।५०।४ ले गुणदा ९७४४।१६२४०।१२१८०।४०६००।३२४८ भये यस्मा ८०० को भागदींदा लब्धि १२।११ मं० २०।१८ बु० १५।१३ बृ० ५०।४५ शु० ४।३ श० भये इन लाइ क्रमैले १।८।२५।४।१ ले शेष गर्दा भौमादिको कलादि बीज ०।११, ४।१८, १५।१३, ३।४५, ०।३ भये काशी मध्यरेखाबाट पूर्व हुनाले भौमादिको ऋणकलादि देशांतर १।७४, २।३८, ०।१४, २।३=, ०।६ हुन्छ इदुवैधन ( बीज ) ऋण ( देशांतर ) को अन्तर मं० ऋ० १।१३। बु० ध० १।४ बृ० ध० १४।५९। शु० ध. ०।७ श० ऋ० ०।३ ई यथा क्रम मध्यम ग्रहमा सङ्कलन व्यवकलन गर्नाले बीजदेशांतर संस्कृत ग्रह ९४९।१०।३६, ७८०।२८।१५, ६७२।३३।३०, ४०७।३२।३३, ५६।५९।५७ भये ॥

इति श्रीटीकारामधनञ्जयकृतायां मनोरमायां
ग्रहमध्यमाधिकारः षष्ठः ॥ ६ ॥

---

# अथ पञ्चतारास्पष्टीकरणाधिकारः ॥



ग्रहमध्यमाधिकारपछिक्रमप्राप्त पञ्चतारास्पष्टीकरणाधिकार प्रारंभ गर्दछन् पहीले ग्रहको मंदकेन्द्र उपजातिछंदले भंदछन् ।

अष्टेषुषट्नन्दचतुःशताढ्याः
पृथग्ग्रहाः षड्भगतैष्यकेन्द्राः ।
षड्भादिकाश्चक्रगणाद्विशोध्याः
शतेनलब्धाः स्फुटमंत्रखण्डाः ॥ १ ॥

'ग्रहाः' मध्यम भौमादिग्रह 'पृथक्' दुइ स्थानमा राखनू र एक स्थानमा क्रमैले 'अष्टेषुषट्नंदचतुःशताढ्याः' मङ्गल मध्यमा ८०० बुधमा ५०० गुरु ६०० शुक्रमा ९०० शनीमा ४०० युक्त गरेर 'षड्भगतैष्यकेंद्राः' ( षड्भादूने गतं, षड्भादधिके, एष्यम् ) ६०० देखि कमभयेमा ऋण अधिक भये धन हुन्छ यो मध्यकेन्द्र हुन्छ 'षडभाधिकाः' ६०० देखि अधिक भये 'चक्रगणात्' १२०० देखि 'विशोध्याः' ( १२०० देखि अधिक

भये १२०० ले शेष गर्नु ) शुद्धगर्नु र 'शतेनलब्धाः' १०० ले भागलींदा मिलेका लब्धि 'अत्र' यहाँ 'स्फुटं' स्पष्ट 'खण्डाः' खण्डाहुन्छन् ॥

रुद्रा नवेन्दू द्वियमा नवेन्दू
रुद्राश्चभोग्योद्भवयुक्तहीनाः ॥
घनागनागत्रयसूर्यनिघ्ना
दशोद्धृतं हीनधनं च मध्ये ॥ २ ॥

'ताः' ती खण्डा 'रुद्राः' ११ नवेन्दू १९ 'द्वियमाः' २२ 'नवेंदू' १९ 'रुद्राः' ११ हुन् 'भोग्योद्भवयुक्तहीनाः' भुक्तभोग्यांतर ले गुणियेका शेष देखि १०० को भाग ले प्राप्त लब्धि धन भये योग र ऋण भये हीन भयेका 'घनागनागत्रयसूर्यनिघ्नाः' १७।७।८।३।१२ ले गुणियेका ( खण्डाः ) खण्डा 'दशोद्धृतं' खंडा देखि १० का भाग ले प्राप्त लब्धि 'मध्ये' मध्यग्रहमा 'हीनधनं' ऋण धन गर्नु ॥ २ ॥

तदेव प्रपञ्चयति—

षड्भोनकेन्द्रेखचरे ऋणंस्या-
त्षड्भाधिके स्याद्धनमत्रनूनम् ॥
पृथक्स्वशीघ्रोनितकेन्द्रषड्भा-
त्प्राग्वत्स्वशीघ्रोनयुतःस्फुटःस्यात् ॥ ३ ॥

'षड्भोनकेंद्रेखचरे ६०० भंदा कमकेंद्र भये का ग्रहमा 'ऋणंस्यात्' ऋणाहुन्छ 'षड्भाधिकेखचरे' ६०० भंदा बढी केंद्र भयेका ग्रहमा 'अत्र' यहाँ 'नूनम्' निश्चयले 'धनंस्यात्' धनहुन्छ 'षड्भाधिका०' यो पैल्हा श्लोक को उत्तरार्द्ध र यो पूर्वार्द्ध स्पष्ट क्षेपक हून भनि जानिन्छ ता पनि स्पष्ट होस भन्नका निमित्त यहाँ राखि दिये को छ ॥ ऊन युत भये पछि मंदस्पष्टग्रह हुन्छ ॥

मंदस्पष्टग्रह 'पृथक्' दुइस्थानमाराखनू र एक स्थानमा 'स्वशीघ्रोनितकेंद्रषड्भात्' आफ्ना शीघ्रले घटायेर ६ राशि देखि कमबढताभये 'प्राग्वत्' धन ऋण हुन्छ यो द्वितीय शीघ्र भयो यस्लाइ ६०० देखि

अधिक भये १२०० देखि शुद्ध गर्नु १२०० देखि बढता भये १२०० ले शेषगर्नु र १०० ले भाग लींदा प्राप्तलब्धि खाब्धि खण्डा हुन्छन् ।

[१]यदान्त्यखण्डं पतितं तदाशु स एव भोग्यः क्रियते फलोनः ॥
न प्राप्यते तत्र तदा क्रमं च तत्पूर्वखंडोद्भवमभ्रयुक्तम् ॥ १ ॥

खाब्धि खण्डा को भुक्त भोग्यांतर ले गुणिये का शेष देखि १०० का भागले प्राप्तलब्धि भुक्त खण्डामा ऋण धन गरेर 'स्वशीघ्रोनयुतः' शीघ्र फलले ( खाब्धि खण्डाको भुक्त भोग्यांतर धन भये युक्त र ऋण भये ऊन ) ऊन युत गरेयंको मंद स्पष्ट जो छ स्फुटः स्यात्' स्पष्ट हुन्छ ।

ग्रहःस्वशीघ्रोनितके यदास्या-
· दृणे धनेवा शरराशिसंख्यः ॥
राशिं विनाङ्कां त्रिगुणीप्रकुर्या-
त्तदा ततः शीघ्रफलं प्रसाध्यम् ॥ ४ ॥

'स्वशीघ्रोनितके' स्वशीघ्रघटेका 'ऋणेधनेवा' ऋण अथवा धनमा 'शरराशिसंख्या' ५०० संख्याराशि भयेको 'यदास्यात्' जैले हुन्छ 'तदा' तब 'राशिंविना' राशिबाहेक 'अङ्कान्' अङ्क 'त्रिगुणीप्रकुर्यात्' ३ ले गुणिये का गरायेर 'ततः' तहाँपछि (पूर्वोक्तवत्) पैल्हे भनियेका रीति ले 'शिघ्रफलं प्रसाध्यम्' शीघ्रफलसिद्धगर्नु ॥ भनेको पनि छ कि 'पंचराशिस्थितो यत्र त्रिघ्नं तत्रैव कारयेत्' इति ।

शीघ्रखण्डाङ्काः अर्थात् खाब्धिखण्डाः ।

भौमस्यखाब्धी नगसप्तखेशाः
देवेन्दुजातीन्द्रगगोनगार्थाः ॥
बुधस्यभाग्नीषुकुसप्तषट्स्वरा-
स्ततस्त्रिपंचाङ्गगुणानवेन्दवः ॥ ५ ॥
गुरोर्नृपाःखाग्निगजत्रयंच
षड्वह्नयोरामयमानृपाङ्काः ॥

(१) यो ७ वा श्लोकको उत्तरार्द्ध 'क' पुस्तकमा मात्र छ ॥

भृगोर्द्विवेदाःकुगजाःखसूर्या
व्योमाद्दनागेन्द्रभभूस्त्रिशैलाः ॥ ६ ॥
शनेर्दिशोऽब्दाःकुयमानवेन्दू
द्विभूमयोमङ्गलमब्धयश्च ॥
बीजैःसुगोप्यैरिहखेचरास्ते
सिद्धांततुल्यंखलुसंस्कृतंस्यात् ॥ ७ ॥

'भौमस्य' मङ्गलका 'खाब्धी' ४० 'नगसप्त' ७७ खेशाः ११० 'देवेंदु' १३३ जातीन्दु १२२ नगगो ९७ नगार्थाः ५७ ईसात हुन् ॥ 'बुधस्य' बुधका भ २७ अग्नीषु ५३ कुसप्त ७१ षट्स्वराः ७६ 'ततः' तेस्पछि त्रिपंच ५३ अङ्गगुणाः ३६ नवेन्दवः १९ ईसातहुन् ॥ 'गुरोः' बृहस्पतिका नृपाः १६ खाग्नी ३० गजत्रयंच ३८ षड्वह्नयः ३६ रामयमाः २३ नृपः १६ अङ्काः ९ ईसात् हुँन् ॥ 'भृगोः' शुक्रका द्विवेदाः ४२ कुगजाः ८१ खसूर्याः १२० व्योमाद्द १५० नागेन्द्र १४८ भभूः १२७ त्रिशैलाः ७३ ईसात हुन् 'शनेः' शनिका दिशः १० (१) अब्दाः १७ कुयमाः २१ नवेन्दू १९ द्विभूमयः १२ (२) मङ्गलं ८ अब्धयश्च ४ पनिजंमा सात शनिका खाब्धि खंडा हुन् ॥ ७ ॥

जस्तै=मध्यम मङ्गल ९४९।१०।३६ लाइ २ स्थान मा राखेर एक स्थानमा मङ्गलको मन्दोच्च ८०० जोडे पछि १७४९।१०।३६ यस्मा १२०० को भाग दींदा शेष मंगलको मंदकेंद्र ५४९।१०।३६ भये यस्मा १०० को भाग दींदा फल गतखण्डा ५ पाँचवाँ ११ मिल्यो भोग्यखण्डा न हुनाले अन्तरपनि ११ भयो अब भाग शेष ४९।१०।३६ लाइ अन्तर ११ ले गुणे पछि ५४०।५६।३६ भयो यस्मा १०० को भाग दींदा लब्धि ५।२४।३४ भयो यस्लाइ १७ ले गुणदा ९५।२।२२ भयो यस्मा १० को भाग दींदा लब्धि ९।३०।१४ भयो यस्लाइ। केंद्र छ राशि भंदा कमछ तसर्थ अर्का स्थान मा राखेका मध्यम भौम ९४९।१०।३६ मा घटाउदा मंद स्पष्ट भौम ९३९।४९ २२ भयो यस्लाइ २ स्थानमा राखेर एक स्थानमा भौम शीघ्र

(१) जलदिने अर्थात मेघ ॥ (२) मङ्गलशब्द हस्तिवाचक हो अतः ८ संख्य ग्रहण गरिन्छ ॥

८३।७४३ लाइ घटाये पछि भौम द्वितीय शीघ्र ८५६।३२।२९ भयो यस्लाइ १२०० मा घटाये पछि ३४३।२७।२१ भयो यस्मा १०० को भाग दींदा फल २ भुक्त खाण्धिखंडा तेस्रो ११० भो भोग्य १३३ ई दुवैको अन्दर धन २३ छ यस्ले शेष ४३।२७।२१ लाइ गुणदा ९९९।२९।३ भये यस्मा १०२ को भाग दींदा लब्धि ९।५९।४१ भयो यस्लाइ भुक्त खण्डा ११० मा जोडदा शीघ्रफल ११९।५९।४१ द्वितोय शीघ्र ६ राशि भंदा बढी च तसर्थ अर्का स्थानमा राखेका द्वितीय शीघ्रमा शीघ्र फल जोडे पछि स्पष्ट भौम १०५९।४०।३ भयो।

यस्तै = मध्यम बुध ८३।७४३ लाइ दुइ स्थानमा राखेर एक स्थानमा बुधको मंदोच्च ५०० जोडदा मंदकेंद्र ५८३।७४३ भयो यस्मा १०० को भाग दींदा लब्ध गत खण्डा ५ पाँचवाँ ११ मिल्यो यस्को पनि भोग्यखण्डा न हुनाले अन्तर ऋण ११ भयो यसैले शेष ८३।७४३ लाइ गुणेपछि ९१४।२४।५३ भयो यस्मा १०० का भागले लब्ध ९।८।३९ यस्लाइ भुक्त खण्डा ११ मा घटायें पछि मंदफल १।५१।२१ भयो यस्लाइ ७ ले गुणेर १२।५९।२७ लाइ १० को भाग दींदा लब्धि १।१७।५६ लाई मंद केंद्र छ राशि भंदा कम हूँदा अर्को स्थानका मध्यन बुध ८३।७।४३ मा घटाये पछि बुधको मन्द स्पष्ट ८१।५९।४७ भयो मंद स्पष्ट दुइ स्थान मा राखेर एक स्थानमा बुध शीघ्र ७८०।२७।१५ घटाउनू पर्नेहो परंतु घटदैन तसर्थ मंद स्पष्टमा १२०० जोडेर घटायेपछि बुधको द्वितीय शीघ्र ५०१।२१।३२ भयो यस्मा १०० को भाग दींदा फल ५ मिल्यो शेष १२१।३२ लाइ ३ ले (१) गुणेर ४।४।३६ मा १०० को भाग दींदा फल० मिल्या यस्माइ पूर्वलब्धि ५ मा मिलाउँदा ५ भयो अतएव भुक्त खाण्धि खण्डा पाँचवाँ ५३ भोग्य ३६ भये इ दुवैको अन्तर ऋण १७ भयो यसैले शेष ४।४।३६ लाइ गुणेर ६९।१८।१२ यस्मा १०० को भाग दींदा ०।४१।३५ लब्धि भये यस्लाइ भुक्त खंडा ५३ मा घटाये पछि द्वितीय शीघ्रफल ५२।१८।२५ भये मंद स्पष्ट ६ राशी भंदा कम छ अतएव अर्को स्थानमा राखेका बुध स्पष्टका शीघ्रफल घटाये पछि २९।३१।२२ भयो यस्मा १०० ले भाग लींदा लब्ध वुज स्पष्ट ०।९।०।२९ भयो॥

मध्यम गुरु ६७२।३३।३० लाइ दुइ स्थानमा राखेर एक स्थानमा

१ ग्रहः स्वशीघ्रोनितके० का अनुसार शेषलाइ ३ ले गुणेर १०० ले भाग लीनू यही आशय हो।

गुरु मंदोच्च ६०० युक्त गरे पछि १२७२।३३।३० लाइ १२०० ले शेष गरे पछि बृहस्पतिको मंद केंद्र ७२।३३।३० भयो यस्मा १०० को भाग दींदा लब्धि ० मिल्यो अतः भुक्त खण्डाको अभाव भयो भोग्य खण्डा ११ भयो अन्तर यही धन भयो यसैले शेष ७२।३३।३० लाइ गुणेर ७९८।८।३० मा १०० का भागले लब्धि ७।५८।५३ भये भुक्तखण्डाका अभावले यही मन्द फल भयो यसैलाइ ८ ले गुणेर ६३।५१।४ मा १० का भागले ६।२३।६ मिले इन्लाइ केन्द्र छ राशि भन्दा कम हुनाले अर्का स्थानमा राखेका मध्यमा घटाये पछि मंदस्पष्ट बृहस्पति ६६६।१०।२४ भयो मंद-स्पष्ट दुइ स्थानमा राखेर एक स्थान मा बृहस्पताको शीघ्र ८३।७।४३ घटाये पछि द्वितीय शीघ्र ५८३।२।४१ भयो यस्मा १०० को भाग दींदा लब्धि ५ शेष ८३।२।४१ लाइ ३ ले गुणेर २४९।८।३ मा १०० को भाग दींदा लब्धि २ भयो पैल्हे को लब्धि ५ र यस्को योग ७ हुनाले भुक्त खण्डि खण्डा सातवाँ ६ भयो भोग्य खण्डा का अभाव ले यही अन्तर ७ ऋण भयो यसैले शेष ४९।८।३ लाइ गुणेर ४४२।१२।२७ लाइ १०० को भागदींदा ४।२५।१९ फल मिल्यो यस्लाइ भुक्त खण्डा ९ मा घटाये पछि शीघ्र फल ४।३४।४१ भयो द्वितीय शीघ्र ६ राशि भंदा कम हुनाले अर्का स्थानमा राखेका मंद स्पष्ट ६६६।१०।२४ मा घटाये पछि स्पष्ट गुरु ६६१।३५।४३ भयो यस्मा १०० को भाग दिये पछि राश्यादि स्पष्ट बृहस्पति ६।१८।३९।२५ भयो ॥

मध्यम शुक्र ८३।७।४३ लाइ दुइ स्थानमा राखेर एक स्थानमा शुक्र मन्दोच्च ९०० युक्त गरे पछि शुक्रको मंद केंद्र ९८३।७।४३ भयो यस्लाइ १२०० मा घटाये पछि शेष २१६।५२।१७ बच्यो यस्मा १०० को भागदींदा फल गत खण्डा २ दो औ १९ भोग्य खंडा २२ यस्को अन्तर ३ धन भयो ३ ले शेष १६।५२।२७ लाइ गुणेर ५०।३६।५१ यस्मा १०० को भागदींदा लब्धि ०।३०।२२ भयो यस्लाइ भुक्त खंडा १९ मा जोडे पछि मंद फल १९।३०।२२ भयो यस्लाइ ३ ले गुणेर ५८।३१।६ मा १० का भाग ले ५।५१।७ लब्धि भया यस्लाइ केंद्र ६ राशि भंदा अधिक छ अतएव अर्को स्थानमा राखेका मध्यम शुक्र ८३।७।४३ मा जोडे पछि मंद स्पष्ट शुक्र ८८।५८।५० भयो यस्लाइ दुइ स्थानमा राखेर एक स्थानमा शुक्र शीघ्र ४०७।३२।३३ घटाउन लाइ १२०० मंद केंद्रमा जोडेर घटाये पछि द्वितीय शीघ्र ८८१।२६।१७ भयो यस्लाइ १२०० मा घटाये पछि ३१८।३३।४३ भयो यस्मा १०० को

भागलींदा ३ लब्धि मिल्यो अतः तेश्रो खाब्धि भुक्त खण्डा १२० भोग्य १५० ई दुइको अंतर ३० धन भयो यसैले शेष १८।३३।४३ लाइ गुणेर ५५६।५१।३० मा १०० को भागदींदा ५।३४।७ लब्धि भयो यस्लाइ भुक्त खण्डा १२० मा जोडे पछि १२५।३४।७ शीघ्र फल भयो द्वितीय शीघ्र ६ राशी भंदा अधिक छ अतएव अर्को स्थानमा राखेका मंद स्पष्ट ८८।५८।५० मा योग गरे पछि स्पष्ट शुक्र २१४।३२।५७ भयो यस्मा १०० को भागदींदा शुक्रको राश्यादि स्पष्ट २।४।३१।४६ भयो ।

मध्यम शनि ५६।५९।५७ लाइ दुइ स्थानमा राखेर एक स्थानमा शनि मंदोच्च ४०० युत गरे पछि शनि मंद केंद्र ४५६।५९।५७ भयो यस्मा १०० को भागदींदा लब्धि ४ याने भुक्त खंडा चौथो १९ भोग्य ११ इ दुई को अंतर ऋण ८ छ यसैले शेष ५६।५९।५७ लाइ गुणेर ४५५।५९।३६ मा १०० को भागदींदा ४।३३।३६ भयो यस्लाइ भुक्त खंडा १९ मा घटाये पछि मंदफल १४।३६।२४ भयो यस्लाइ १२ ले गुणेर १७३।१६।४८ मा १० को भागले लब्धि १७।१९।४१ भयो यस्लाइ मंद केंद्र ६ राशि भंदा न्यूनछ तसर्थ मध्यम शनीमा घटाये पछि मंद स्पष्ट शनि ३९।४०।१६ भयो यस्लाइ दुइ स्थान मा राखेर एक स्थानमा शनि शीघ्र ८३।७।४३ घटाउन-लाइ १२०० जोडेर घटाये पछि शनि को द्वितीय केंद्र ११५६।३२।३३ भयो यस्लाइ १२०० मा घटाये पछि ४३।२७।२७ यस्मा १०० का भागमा लब्धि ० हुँदा भुक्त खंडा ० भोग्य १० अंतर पनि धन १० भयो १० ले शेष ४३।२७।२७ लाइ गुणेर ४३४।३४।३० मा १०० को भागदींदा ४।२०।४५ फल मिल्यो भुक्त खंडाका अभावले यही शीघ्र फल भयो राशी ६ राशी भंदा अधिक हुनाले पृथक्स्थ मद स्पष्ट ३९।४०।१६ मा योग गरे पछि स्पष्ट शनि ४४।१।१ भयो यस्मा १०० को भाग दिये पछि शनिश्चर को स्पष्ट राश्यादि ०।१३।१२ भयो ।

नं० १

भौमखाब्धिखण्डांतर

| ० | १ | २ | ३ | ४ | ५ | ६ | ७ | संख्या |
|---|---|---|---|---|---|---|---|---|
| ० | ४० | ७७ | ११० | १३३ | १२२ | ९७ | ५७ | खंडा |
| ४० | ३७ | ३३ | २३ | ११ | २५ | ४० | ५७ | अंतर |
| + | + | + | + | | | | | चिह्न |

नं० २

बुधखाब्धिखण्डांतर

| ० | १ | २ | ३ | ४ | ५ | ६ | ७ | सं० |
|---|---|---|---|---|---|---|---|---|
| ० | २७ | ५३ | ७१ | ७६ | ५३ | ३६ | १९ | खं० |
| २७ | २६ | १८ | ५ | २३ | १७ | १७ | १३ | अं० |
| + | + | + | + | | | | | चि० |

नं० ३

गुरुखाण्डिखण्डांतर ।

| सं. | ० | १ | २ | ३ | ४ | ५ | ६ | ७ |
|---|---|---|---|---|---|---|---|---|
| खं. | ० | १६ | ३० | ३८ | ३६ | २३ | १६ | ९ |
| अं. | १६ | १४ | ८ | २ | १३ | ७ | ७ | ९ |
| चि | + | + | + | — | — | — | — | — |

नं० ४

शुक्रखाण्डिखण्डांतर ।

| संख्या | ० | १ | २ | ३ | ४ | ५ | ६ | ७ |
|---|---|---|---|---|---|---|---|---|
| खण्ड | ० | ४२ | ८१ | १२० | १५० | १४८ | १२७ | ७३ |
| अंतर | ४२ | ३९ | ३९ | ३० | २ | २१ | ५४ | ७३ |
| चिह्न | + | + | + | + | — | — | — | — |

नं० ५

शनिखाण्डिखण्डांतर

| सं० | ० | १ | २ | ३ | ४ | ५ | ६ | ७ |
|---|---|---|---|---|---|---|---|---|
| खं० | ० | १० | १७ | २१ | १९ | १२ | ८ | ४ |
| अं० | १० | ७ | ४ | २ | ७ | ४ | ४ | ४ |
| चि० | + | + | + | — | — | — | — | — |

भादिः कृतघ्नोऽङ्कहृतोग्रहस्तु
राश्यादिरङ्कैर्गुणितःकृताप्तः ॥
भादिर्भवेद्भादिषुराशिहारः
शराकृतीराशिमुखेशतञ्च ॥ ८ ॥

'भादिर्ग्रह' नक्षत्रादिग्रह 'कृतघ्नः' ४ ले गुणेर 'अङ्कहृतः' ९ ले भाग लिये पछि 'राश्यादिर्भवेत्' राश्यादि हुन्छ 'राश्यादिस्तु' राश्यादि ग्रह ता 'अङ्कैर्गुणितः' ९ ले गुणेर 'कृताप्तः' ४ ले भागलिये पछि 'भादिर्भवेत्' नक्षत्रादिहुन्छ (शेष रहेकामा ता अवश्य अंतर पर्दछ) 'भादिषु' नक्षत्रादि ग्रहमा र 'राशिमुखेच' राश्यादि ग्रहमा पनि 'राशिहारः' स्पष्ट राश्यादिघनाउने हार क्रमैले 'शराकृती' २२५ 'शतं' १०० हुन् ॥ ८ ॥

जस्तै=स्पष्ट सूर्य २००।४४।४५ यस्लाइ ४ ले गुणेर ८०२।५९।० मा ९ को भागदीदा ८९।१३।१३।२० यस्मा फेरि १०२ को भाग दिये पछि स्पष्ट राश्यादि सूर्य २ २६।४९।५६ भयो ॥ अब स्पष्ट भौम १०५९।४०।२ लाइ ९ ले गुणेर ९५३७०।२७ मा ४ को भाग दियेर २३८४।१५।७ लाइ २२५ ले भागदियेपछि स्पष्ट राश्यादि भौम १०।१७।५६ भयो यै हिसाब ले बुधादि ग्रहस्पष्टगर्नु ॥

रवेः स्वराः खं, नवतिः खमिन्दोः,
कैंद्रे शतं भूस्तमसः खसिद्धौ ॥
पादोनदृग्रामघनौ खमेघौ त्र्यब्दौ
खसप्तौ क्षितिजादिकानाम् ॥ ९ ॥

'रवेः' सूर्यको 'स्वराः खं' ७।० 'इन्दोः' चंद्रको 'नवतिः खं' ९०।० 'केन्द्रे' चंद्रकेंद्रमा 'शत्तं भूः' १००।१ राहुको ०।२४ 'क्षितिजादिकानां' भौमदिग्रहको क्रमैले मं. 'पादोनदृक्' १।४५ बु० 'रामघनौ ३।१७ बृ० 'खमेघौ' ०।१७ शु० 'त्र्यब्दौ' ३।१७ श० 'खसप्तौ' १।७ मंदगतिहुन् ॥ ९ ॥

त्रयोघना विश्वइभानलौच
त्रयोघनाः पञ्चनखा गुणाब्दाः ॥
कुजादिशीघ्रस्य च भुक्तयः स्यु-
रुक्ता स्मृतीशैर्गणितप्रवीणैः ॥१०॥

'स्मृतीशैः' धर्मज्ञ'गणितप्रवीणैः' गणितशास्त्रमा निपुण आचार्य हरूले 'कुजादिशीघ्रस्यच भुक्तयः' कुजादि शीघ्रकोगति क्रमैले 'त्रयोघनाः' ३।१७ विश्वइभानलौ १३।३८ त्रयोघनाः ३।१७ पंचनखाः ५।२० गुणाब्दाः ३।१७ 'उक्ताः' कहियेका छन् ॥ १० ॥

अबमंदगति को रीति भंदछन

घनागनागत्रिरविघ्नभुक्ति-
र्भोग्याहतायाः खशतेन लब्धम् ॥

ऊनेतु खण्डेसहितान्यथोना

मन्दस्फुटा भुक्तिरियं कुजादेः ॥११॥

'कुजादेः' भौमादिको 'घनागनागत्रिरविघ्नभुक्तिः' क्रमैले १७-७ ८-३-१२ लेगुणे को जो भुक्ति 'भोग्यहृतायाः' मंदखडाका भुक्त भोग्यांतर गुणियेका देखि 'खशतेनलब्धं' १००० ले भागदींदा प्राप्तलब्धि 'खण्डे' भोग्यखण्डा 'ऊने' कम भये 'सहिता' युक्त 'अन्यथा 'ऊना' अधिक भये कि 'मन्द भुक्ति 'इयं' यो कुजादेर्मंदस्फुटाभुक्तिः 'मंगल आदि ग्रहको स्पष्ट गति हुन्छ।

जस्तै=मङ्गलको भुक्ति १।४५ लाइ १७ ले गुणेर २९।४५ यस्तैंबुधको भुक्ति ३।१७×७=२२।५९ बृहस्पतिको ०।१७×८=२।१६ शुक्रको ३।१७×३=९।५१ शनिको ०।७×१२=१।२४ लाइ फेरि आप्ना आप्ना भुक्ति भोग्यांतरले गुणे पछि जस्तै मंगल को ऋण ११ ले २। १६×११÷१०००=०।२० मिल्यो खंडांतर ऋण हुनाले १।४५ मा युक्तगरे पछि भौमस्पष्ट भुक्तिः २।४।३८ एवं बुध २२।५९×११÷१०००=०।९+३। १९=३।३२।१० गुरुको ०।१५।३० शुक्र ३।१५।१४ शनि ०।७४० भये।

मन्दस्फुटा शीघ्रगतौ विशोध्या

प्राग्वत्कृताद्भोग्यगुणाच्छताप्ता ॥

बह्वल्पभोग्ये स्वमृणं यथास्या-

द्वक्रागतिःस्याद्विपरीतशुद्धा ॥१२॥

(कुजादेः) भौमादिको 'मंदस्फुटा गतिः' मंद स्पष्ट गति 'शीघ्रगतौ' शीघ्रगतीमा 'विशोध्या' घटाउनु 'भोग्यगुणाच्छताप्ता' खाब्धिखण्डान्तर ले गुणेर १०० ले भागलींदा प्राप्तलब्धि 'बह्वल्पभोग्ये' भोग्यखण्डा कम र अधिकभये 'यथा' क्रमैले 'स्वमृणंस्यात्' धन र ऋण हुन्छ अर्थात् भुक्त भोग्यखण्डांतर धनभये मन्दगतीमा योगगर्नु पर्दछ ऋणभये हीनगर्नु पर्दछ (यदा) जैले 'गतिः' गति 'वक्रास्यात्' वक्रभय देखि (तदा) तव 'प्राग्वत्कृतात्' शीघ्र गती लाइ ३ ले गुणेर' शेष भोग्यगुणाच्छताप्ता—इत्यादि गर्नु र 'विपरीतशुद्धाभवेत्' पूर्वोक्त विपरीत रीतले शोधनु अर्थात् फलमानै

१ सूर्यकोगति उक्त प्रकारलेल्याइ ८ ले गुणन् र स्पष्ट हुन्छ अरुकी १८ लें गुणन् र स्पष्ट हुन्छ ॥

मंद गती घटाउनू ॥ १२ ॥ घटेन भने विपरीत घटाउनु १८ ले गुणनु स्पष्ट गर्दि हुँछ ॥

जस्तै = मङ्गलको शीघ्रगति ३।१७ मा मंदस्पष्टगती २।४।३८ घटाये पछि शीघ्रकेंद्रगति १।१२।२२ भयो यस्लाइ खंडांतर ऋण ३३ ले गुणेर २७।४४।२६ यस्मा १०० को भागदींदा शीघ्रफल ०।१६।३९ भयो खंडांतर ऋण हुनाले २।४।२८ मा घटाये पछि मंगलको स्पष्टगति १।४७।४९ भयो यस्तै बुधादि को पनि जान्नु ॥

विश्वाश्विगन्धर्वदशाङ्गमासै-
श्चक्रार्द्धचक्र क्षितिजादिषूह्यम् ॥
षड्वह्नयोद्वादशतर्कबाण-
वेदाश्विनः सप्तरसाः क्रमेण ॥ १३ ॥
स्वशीघ्रकेन्द्रस्यच मण्डलार्द्धा-
त्पूर्वापरावक्रगतौच राशेः ॥
षष्ट्यष्टि भूपाङ्कगुणैः कुदस्त्रैः
श्चक्रादितः प्राक्परतोऽस्तगःस्यात् ॥१४॥
एवं ज्ञभृग्वो वसुपञ्चषड्भा-
त्प्रागूनखेटः परतोऽधिकोऽर्कात् ॥१५॥

'क्षितिजादिषु' भौमादिग्रहको 'विश्वाश्विगंधर्वदशाङ्गमास्मैः' १३—२–७—१०--६ महीनामा 'चक्रार्द्धचक्रमूह्यम्' चक्र भये अर्द्धचक्र र अर्द्ध-चक्रभये चक्र विचारगर्नु । 'स्वशीघ्रकेंद्रस्य राशेः' आफ्ना आफ्ना' केंद्र राशीका 'मंडलार्द्धात्' चक्रार्द्धदेखि 'पूर्वापराः' यता र उता 'क्रमेण भौमादि ग्रहका क्रमले षड्वह्नयः ३६ द्वादश १२ तर्कबाण ५६ वेदाश्विनः २४ सप्तरसाः ६७ यतीदीन 'वक्रगतौ' वक्रगतीमा ( भवेयुः ) हुन्छन् 'चक्रा-दितः' पूर्णचक्र देखि 'प्राक्परतः' यताउता 'षष्ट्यष्टिभूपाङ्कगुणः कुदस्त्रैः' ६०।१६।१६।३९।२१ ( दिनैः ) दिन 'अस्तगःस्यात्' क्रमैले अस्तहुन्छनू । 'एवं' यस्तै 'ज्ञभृग्वोः' बुधशुक्रको 'षड्भात्प्राक्परतः' ६०० राशिदेखि

यताउताका 'वसुपञ्चदिनानि' ८५ दिन अस्तग हुन्छन्, 'अर्कात्' सूर्य देखि 'ऊनः खेटः' कमग्रह 'प्रागस्तगः स्यात्' सूर्य राश्यादिभंदा पूर्वमा अस्तहुन्छ 'अधिकः परतः स्यात्' अधिकग्रह पश्चिममा अस्त हुन्छ ॥

वक्रहुनेकेन्द्रांक भंदछन् ।

भौमो गच्छति वक्रतां शुचिशरांगे वै स्वशीघ्रोनिते
तद्वच्चंद्रसुतस्त्रयोदशमुनौजीवोरिषट्पर्वते ॥
शुक्रः खेषुरसेश्वराशुतनयो वन्हीन्दुनागे पुनः ।
कौटिल्यं परिहृत्य पुष्कलगतिर्मार्गीभवेच्छोधिते ॥१६॥

'स्वशीघ्रोनिते' द्वितीयशीघ्रमा 'शुचि शरांखे' 'सति' ६५२ भयेछदामा 'भौमः' मंगल 'वक्रतां गच्छति' वक्रीहुन्छ 'तद्वत्' तेस्तै 'त्रयोदश मुनौ' ७१३ मा 'चन्द्रसुतः' बुध 'अरिषट्पर्वते' ७६६ मा 'जीवः' बृहस्पति 'खेषुरसे' ६५० मा 'शुक्रः' शुक्र 'वह्नीन्दुनागे' ८१३ मा 'खरांशुतनयः' शनि वक्रीहुन्छन् 'पुनः' फेरि 'केन्द्रे' 'शोधिते' केन्द्र १२० मा शोधेपछि 'कौटिल्यं परिहृत्य' वक्रता छोडेर 'पुष्कलगतिः सन्' सरलगति भयेको छदा 'मार्गीभवेत्' मार्गी हुन्छ ।

अस्तं लघ्वस्तं च निरूपयति ।

भौमोऽस्तं दहनग्रहे खजलदे सौम्योऽरिवेदैर्गुरु-
र्व्योमाष्टैश्चभृगुर्यमोरिपुरसैः केन्द्रेस्वशीघ्रोनिते ॥
लघ्वस्तं शशिजस्त्रिपन्नगरसैःकाष्ठारिपौभार्गव-
स्तस्मिञ्चक्रविशोधितं समुदयं यांतिध्रुवं खेचराः ॥१७॥

'स्वशीघ्रोनिते' केन्द्रे द्वितीयशीघ्रमा 'दहनग्रहेसति' ९३ भये छदामा 'भौमः' मङ्गल 'अस्तंयति' अस्तहुन्छ 'खजलदे' १७० मा 'सौम्यः' बुध 'अरिवेदैः' ४६ मा 'गुरुः' बृहस्पति 'व्योमाष्टैः' ८०मा 'भृगुः' शुक्र 'रिपुरसैः ६६ मा 'यमः' शनि ( अस्तहुन्छन् ) त्रिपन्नगरसैः' ६८३ मा 'शशिजः' बुध 'काष्ठारिपौ' ६१० मा 'भार्गवः' शुक्र 'लघ्वस्तं' लघ्वस्तहुन्छन् 'तस्मिन्' अस्तोक्त केन्द्रमा 'चक्रविशोधितेसति' १२० ले शोधेपछि 'ध्रुवं' निश्चयले 'खेचराः' ग्रह 'समुदयं याति' उदयहुन्छन् ॥ १७ ॥

पंचतारास्पष्टीकरणगरेर उपग्रह राहुकेतुको स्पष्टगर्ने
रीति एक श्लोकले बताउंछन्

अहर्गणं वेदहतं दशाप्तं
ध्रुवार्द्धयुक्तं भवतीहपातः ।
खखागनेत्रांतरितो मुखंस्या-
च्चक्रार्द्धयुक्तं स्फुटराहुपुच्छः ॥१८॥

'वेदहतं' ४ लेगुणियेको 'दशाप्तम्' १० लेभागलींदा प्राप्तलब्धिलेर ध्रुवार्द्धयुक्तं' ध्रुवांका आधाले युक्त 'अहर्गणं' दिनगण 'खखागनेत्रांतरितः' २७०० माघटायेपछि 'इह' यींशोदयमा 'पातः' राहु 'भवति' हुन्छ 'चक्रार्द्धयुक्तं' २७०० को आधा १३५० लेयुक्त 'राहुपुच्छ' केतु 'स्फुटः स्यात्' स्पष्टहुन्छ यो राहु सूर्यदेखि उल्टाशोधनुपर्दछ भनेकोपनिछकि ।

द्युवृंदमब्ध्याहतमत्रदिग्भिर्लब्धं ध्रुवंयुग्दलितंभचक्रात् ।
संशोध्यतेराहुरयं प्रतीपान्नक्षत्रगोपातगतश्चतद्वत् ॥ १ ॥

जस्तै = दिगगण २७ लाइ ४ ले गुणेर १०८ मा १० को भागले १०। ४८।० लब्धिभयो यस्लाइ राहु ध्रुवा ५१३०।२५।३९ र्द्ध २५६५।१२।४९ मा जोड़ेपछि २५७६।०।४९ भयो यस्लाइ २७०० मा घटाये पछि राहु १२३।५९। ११ भयो यस्मा २१५ को भागदियेपछि राश्यादि स्पष्टराहु ०।१६।३९।४७ भयो । राहु १२३।५९।११ मा १३५० यागगरेपछि केतु १४७३।५९।११ भयो यस्मा पनि २२५ को भाग दिये पछि स्पष्ट राश्यादि केतु ६।१६।३९।४७ भयो ॥ १८॥

अत्र अगस्त्योदय विधि बतायेर पंचतारास्पष्टीकरणाधिकार समाप्तगर्दछन्—

पलप्रभाद्धित्रिहताखखांकयुता
स्फुटार्केणसमा यदिस्यात्त् ।
याम्ये तदास्यादुदयो निशांते
मुनेरगस्त्यस्य सुरारिहंतुः ॥

स एव भाद्धौत्यतितोऽर्कसाम्यं
घटोद्भवास्तं समुपैति नित्यम् ॥१६॥

'द्विनिहता' ३२ ले गुणिये कि 'खखाङ्कयुता' ९०० ले युक्त फेरि ८ लेगुणेर ६० ले भागलीये कि 'पलप्रभा' पलभा 'यदिस्फुटार्कण समास्यात्' स्पष्ट सूर्यलेतुल्य भइभने 'तदा' तेस्वखत्मा 'सुरारिहंतुः' देवताका शत्रुको नाश गर्ने 'मुनेः अगस्त्यस्य' अगस्तिमुनीको 'याम्ये' दक्षिणदिशामा 'निशांते' रात्रिशेषमा 'उदयः स्यात्' उदयहुन्छ ॥ 'स एव' त्य अगस्ति-स्पष्ट 'भाद्धौत्पतितः' ६०० देखिघटेपछि 'अर्कसाम्यात्' सूर्यसँग बराब-हुँनाले 'नित्यं' प्रतिवर्ष 'अस्तं समुपैति' अस्त हुन्छन् ॥१९॥

जस्तै=काशी को पलभा ५।४५ लाइ ३२ ले गुणेर १८४ भयो यस्मा ९०० मिलाये पछि १०८४ भयो यस्लाइ ८ लेगुणेर ८६७२ मा। ६० को भागदिये पछि अंशादि १४३।३२।० भयो अंशमा ३० को भागदियेपछि राश्यादि स्पष्ट ४।२४।३२।० भयो अतएव सिंहराशिको २४ अंश ३२ कला ० विंकलामा अगस्त्योदयसिद्धभयो ॥ ८ ले गुणेर ६० ले भागने सूर्य स्पष्ट बाट अनुमान गरिन्छ ॥

[1]भ्रुवंध्रुवकेन्द्रस्य शीघ्रकेंद स्फुट ग्रहम् ।
ध्रुवशीघ्रांतरं कुर्यात्स्फुटभुक्त्या विभाजितम् ॥ १ ॥
लब्धंफलं दिनादिस्यादधिकेध्रुवकेन्द्रके ॥
धनं दिनगणेकुर्याद्दणां शीघ्रेऽधिके पुनः ॥ २ ॥
[2]वक्रास्त मार्गोदयका ध्रुवान्यूनं यदा धनम् ॥
अवधेरागतं न्यूनं तदा ऋणमितीरितम् ॥ ३ ॥
मीन[3]मेषगतश्चंद्रः सततं दक्षिणोन्नतः ॥
अन्येषूत्तरश्रृङ्गं स्यात्समत्वं वृषकुम्भयोः ॥ ४ ॥

इति श्री टीकारामधनंजयकृतायां मनोरमायां पञ्चतारा-
स्पष्टीकरणाधिकारः सप्तमः ॥ ७ ॥

—:※:—

(१) 'ग' पुस्तक मा ई श्लोक मूलमा नैछन् (२) यो श्लोक श्रीमान् पं० कृष्णप्रसादले शिष्यहितार्थ सरल बनाये का हो (३) योगनि 'ग' पुस्तकमा । मूलमै छ

# अथत्रिप्रश्नाधिकारः



पञ्चतारास्पष्टीकरणानंतर त्रिप्रश्नाधिकार आरम्भगर्दा पहीले अयनांशा सिद्ध गर्नें उपाय उपजाति छंदले भन्दछन् ।

शकेन्द्रकालात्खशराब्धिहीनात्
षष्ट्याप्तसङ्ख्या अयनांशकाःस्युः ॥
अहर्गणं तैर्युतमेव कुर्याद्
भवेद् द्युवृन्दं द्युनिशोः प्रमाणे ॥ १ ॥

'खशराब्धिहीनात्' ४५० ले हीनभयेका 'शकेन्द्रकालात्' शालिवाहनीयशकदेखि 'षष्ट्याप्तसंख्याः' ६० ले भागलींदा प्राप्तसंख्या 'अयनांशकाःस्यु' अयनांशाहुन्छन् 'अहर्गणं' अहर्गणकन् 'तैर्युतं' ती अयनांशाले युक्त 'कुर्यात्' तदा 'युतमेवाहर्गणं' अयनांश युक्त अहर्गणनै 'द्युनिशोः' रातदीनको 'प्रमाणे' प्रमाणनिमित्तक 'द्युगणं' सायन दिनगण 'भवेत्' हुन्छ ॥ १ ॥

जस्तै=शकमा १८३३-४५० घटाये पछि १३८३ भये यस्मा ६० को भाग दींदा अयनांशा २३।३ भये यस्लाइ अहर्गण २७ मायुक्त गरेपछि सायन दिन गण ५०।३ भयो ।

द्युवृन्दतोऽगाष्टकुभिर्गजाब्दैः
स्वल्पं गतैष्योत्तरदक्षिणे स्तः ॥
ततः खरामङ्कभशश्वदद्यात्सार्द्धं
सषष्ठं च दलं चरार्द्धम् ॥ २ ॥

'द्युवृन्दतः' सायनदिनगणदेखि 'अगाष्टकुभिः' १८७ ले गत, एष्य गराये पछि अर्थात् न घटे देखि सानुसंख्या सौम्य चर हुन्छ घटे देखि

शेषलाइ १७८ ले गतगम्य गरे पछि सानुसंख्या याम्य शरहुन्छ 'गजाब्दैश्च' १७८ लेपनि 'गतैष्योत्तरदक्षिणे' गतगम्यगरायेपछि 'सौम्य' र 'याम्य' चर 'स्तः' हुन्छन् (चात्) (विभक्त्याविपर्यासेन खरामैरितिचात्र सम्बध्यतेऽतः) 'स्वल्पं' सानुसंख्याकन 'खरामैः' ३० लेभागर्लांदा प्राप्तलब्धि 'क्रमशः' क्रमैले खण्डा हुन्छन् (तेके, इत्याशंकायामाह) सार्द्धं खरामं' ४५ 'सषष्ठं खरामं' ३५ 'दलं खरामं' १५ (चात् भोग्यखण्डेन शेषं संगुण्य खरामाप्तामित्यत्रानुमीयते) अथ—भोग्यखण्डाले शेषलाइ गुणेर ३० को भागदींदा प्राप्तलब्धि 'दद्यात्' भुक्तखंडामा योगगर्नु र 'चरार्द्धं स्यात्' चर हुन्छ।

यहाँ सामान्यतः शंकाहुन्छकि चकार देखि दुवै जग्गामा तेतिका अर्थ कसरि निस्क्यो 'ग्रन्थकारको यस्तै मतलबभया श्लोकैमा स्पष्ट किन लेखिदियेन' यस्मा उत्तर या छ कि 'ज्यादा प्रसिद्ध हुनाले' खण्डामा व्हाँसम भोग्यखण्डाले गुणेर भागलिने काइदा प्रसिद्धै छ भाजक पनि अंशादि हुनाले ३० कल्पनागर्नु युक्तियुक्त हो यही विषयमा 'सिद्धान्त शिरोमणी मा' लेखेकोछ कि—

स्वल्पान्तरत्वादबहूपयोगात्प्रसिद्धभावाच्च बहुप्रयासात्॥
ग्रन्थस्य तज्ज्ञैर्गुरुताभयेन यस्त्यज्यतेऽर्थो न स दूषणाय॥ १॥
ग्रहच्छायाविकार श्लो० १६

अतः प्रसिद्ध भाव हुनाले ग्रंथकारले छोड़े मा ग्रन्थकार लाइ दोषछैन जो यो समझ्दैनन् उनैलाइ दोषछ॥ २॥

जस्तै=सायनदिनगण ५०।३–१८७ माघटाउदा सौम्य शेष १३६।५७ भयो शेषभंदा दिनगण को संख्या सानूछ अतः ५०।३ मा ३० को भागदींदा लब्धि १ हुनाले गतखण्डा ४५ भोग्य ३५ भयो यै भोग्य ३५ ले शेष २०।३ लाइ गुणदा ७०१।४५ भयो यस्मा ३० को भागदींदा फल सौम्य चर २३। २३।३० यस्लाइ भुक्त खण्डामा मिलायेपछि सौम्यचर ६८।२३।३० भयो॥

यस्तै एक दिनगण कल्पनागरिन्छ २२५।३ यो १८७ मा घटदैन तसर्थ दिनगण मा घटाये पछि याम्य शेष ३८।३ रह्यो यस्लाइ १७८ मा घटाये पछि. शेष १३९।५७ रह्यो ई दुइ शेषमा पूर्व शेष स्वल्पछ अतः यस्मा ३० को भागदींदा १ लब्धिहुनाले गतखण्डा ४५ शेष ८।३ लाइ ३५ ले गुणेर २८१।४५ मा ३० को भागदींदा याम्यफल ९।२३।३० यस्लाइ भुक्तखंडा ४५ मा योगगरेपछि याम्यचर ५४।२३।३० भयो॥

पलप्रभाघ्नं शरषड्यमाप्तं
पञ्चेन्दुतस्तत्स्वमृणंस्वगोलात् ॥
अहर्दलं व्यस्तमितो निशार्द्धं
तयोर्गतैष्यांतरितं नतं च ॥ ३ ॥

'चरार्धमित्यनुवर्तते' 'पलप्रभाघ्नं' पलभाले गुणेको चरखण्ड देखि 'शरषड्यमाप्तं २६५ ले भागले प्राप्तलब्धि 'स्वगोलात्' सौम्य, याम्य, गोलका हिसाबले 'पञ्चेन्दुतः' १५ देखि 'स्वमृणं' धन ऋणगनु । अर्थात् सौम्यगोलभयें धन, याम्यगोलभये ऋणहुन्छ । र अहर्दलं, दिनार्द्धं हुन्छ 'व्यस्तमितं' यस्को उल्थागर्दा अर्थात् दिनार्धलाइ ३० मा घटाये पछि 'निशार्द्धं' रात्र्यर्धं हुन्छ 'तयोः' दिनार्द्धं रात्र्यर्द्धं लाइ अन्तर गरे क्रमैले सौम्य याम्य नत हुन्छ ।

जस्तै = चरखण्ड ६८।२३ लाइ ५।४५ ले गुणेपछि ३९३।१२ भयो यस्मा २६५ ले भागलींदा १।२९ मिल्यो सौम्यगोल हुनाले १५ मा युक्त गरेपछि दिनार्द्धं १६।२९ भयो यस्लाइ २ ले गुणदा दिनमान ३२।५८ भयो दिनार्द्धं १६।२९।३० मा घटाये पछि रात्र्यर्द्धं १३।३१ भयो यस्लाइ २ ले गुणदा रात्रिमान २७।२ भयो दिनार्द्धं १६।२९ को र रात्र्यर्द्धं १३।३१ को अंतर सौम्यनत २।५८ भयो ।

नतविधिबतायेर अग्रप्रभाविधि बताउछन् ।

षड्घ्नंचरार्द्धन्दशभागहीनं
याम्यन्तुरामांशयुतंदशाप्तम् ॥
तदक्षिहीनाक्षवियुक्तयुक्तं
भानोरुदग्दक्षिणतः प्रभास्यात् ॥ ४ ॥

'षड्घ्नं' ६ ले गुणेको 'दशभागहीनम्' आफ्ना दशौभाग हीन 'सौम्यचरार्द्धं' सौम्य चरार्द्धं गराउनु 'षड्घ्नं' छलेगुणेको 'रामांशयुतं' स्वतृतीयांशलेयुक्त 'याम्यंचरार्द्धं' याम्यचरार्द्धं गराउनु र 'दशाप्तं' दुवैलाइ १० ले भाग लिनू 'तत्' ती पूर्वोक्त रीतीले संस्कृत सौम्य, याम्य चरार्द्धं

